# गैरसरकारी संस्था, गैरसरकारी संस्थाका पदाधिकारी, सदस्य, कर्मचारी एवं स्वयंसेवकहरुको आचार संहिता २०६७[1]

## प्रस्तावना

गैरसरकारी संस्था महासंघ नेपालको विधान २०६३ को दफा २८ ले दिएको अधिकार प्रयोग गरी गैरसरकारी संस्था, गैरसरकारी संस्थाका पदाधिकारी, सदस्य, कर्मचारी एवं स्वयंसेवकहरुको आचरण सम्बन्धमा सोह्रौ साधारणसभा (२०६७ बैशाख १३-१४) द्वारा पारित गरी यो आचार संहिता जारी गरिएको छ । यो आचार संहिताको परिपालन गर्ने गराउने दायित्व गैसस महासंघ नेपाल र यसका सदस्य संस्थाहरु सबैको हुनेछ ।

## १. सामाजिक जिम्मेवारी र पेशागत आचरण

१.१ गैसस महासंघ र यसका सदस्य संस्थाहरुले सामाजिक विकास र स्वयंसेवाका गतिविधिहरुमा उच्च प्राथमिकता दिनु पर्दछ ।

१.२ मानवीय सेवा, सार्वजनिक हितको संरक्षण र सम्बर्द्धनका लागि सदैव क्रियाशील हुनुपर्दछ ।

१.३ साझा मानवीय मूल्य र उद्देश्यका लागि गैससहरुले राजनीति, धर्म, संस्कृति, वर्ण तथा जातजातिको संकीर्ण घेराभन्दा बाहिर रहेर काम गर्न तयार रहनु पर्दछ ।

१.४ पेशागत नैतिकता एवं मर्यादालाई उच्च प्राथमिकता दिनुपर्दछ ।

१.५ गैसस महासंघको विधानसम्मत आचरण गर्नुपर्दछ ।

१.६ सदस्य गैससहरुले कुनैपनि क्रियाकलाप संचालन गर्दा वातावरण संरक्षण तथा जलवायु परिवर्तनप्रति जिम्मेवार भई संवेदशीलता प्रदर्शन गर्नुपर्दछ ।

१.७ सदस्य संस्थाहरुले आफ्नो कार्यक्षेत्रमा कार्यसम्पादन गर्दा समावेशीकरणको सिद्धान्त र प्रकृयालाई आत्मसात गर्नुपर्दछ ।

## २. मानव अधिकार र स्वतन्त्रताको सम्मान

२.१ कुनै पनि गैससले कुनै पनि व्यक्तिको मानव अधिकार उल्लंघन गर्ने क्रियाकलाप गर्नुहुँदैन ।

२.२ नेपाल पक्ष भएको अन्तर्राष्ट्रिय मानवीय कानून, सन्धी सम्झौता तथा घोषणापत्रहरुको पालना गर्नु गैससहरुको कर्तव्य हुनेछ ।

२.३ लोकतन्त्रका आधारभूत सिद्धान्तहरु र सामाजिक न्याय सम्बन्धी मूल्य र मान्यताहरुमा आँच आउने कुनैपनि कार्य गर्नुहुँदैन ।

२.४ प्रत्येक गैससले आफ्नो लक्षित समुदायको नैतिकमूल्य, मान्यता, धर्म, भाषा, रीतिरिवाज, परम्परा र संस्कृतिप्रति संवेदनशील हुनुपर्दछ ।

२.५ गैससका क्रियाकलापहरु सामाजिक समावेशी, लैङ्गिकतामैत्री तथा बालश्रममुक्त हुनुपर्दछ ।

## ३. निरपेक्षता र तटस्थता

३.१ संस्थागत रुपमा कुनैपनि राजनीतिक दल वा दलगत राजनीतिक विचारको प्रचारप्रसार गर्ने, राजनीतिक प्रभाव पार्ने वा राजनीतिक पूर्वाग्रह राखेर काम गर्नु गराउनु हुँदैन ।

---

*१. आचार संहिता २०५९ (गैसस महासंघ नेपालको १६औं साधारणसभाबाट पारित) मा पहिलो संशोधन २०६७ ।*

३.२ संस्थागत रुपमा कुनैपनि धर्म, धर्म विशेषको अनुकुल वा प्रतिकुल हुने गरी प्रचारप्रसार वा विरोध गर्ने कार्य गर्नुहुँदैन ।

३.३ कुनैपनि जात, जाति, भाषा, वर्ण, धर्म, लिङ्ग, उमेर, शारीरिक अवस्था र क्षेत्रीयताका आधारमा भेदभाव वा पक्षपात हुने कार्य गर्नुहुँदैन ।

३.४ संस्थाको आन्तरिक तथा बाह्य श्रोत साधनको उपयोग, अवसर र वितरणमा विभेदजन्य व्यवहार गर्नुहुँदैन ।

## ४. सहयोगात्मक मानवीय व्यवहार

४.१ आफ्नो कार्यक्षेत्रको लक्षित समुदायका बालबालिका, महिला, अपाङ्ग, बृद्ध-बृद्धा र समाजमा पछाडि पारिएका वर्ग, समुदाय र क्षेत्रप्रति सहयोगी व्यवहार गर्नुपर्दछ ।

४.२ प्राकृतिक प्रकोप, आपद्-विपद् परेका बेला स्रोत साधनले भ्याएसम्म प्रभावित क्षेत्रमा तत्काल गई राहत कार्यमा सहयोग गर्नुपर्छ वा सहयोगका लागि वातावरण बनाउन पहल गर्नुपर्दछ ।

४.३ आफ्नो कार्यक्षेत्रमा कार्यरत सेवामुखी स्थानीय संघ, संस्था तथा व्यक्तिहरुलाई उनीहरुको कार्यमा स्रोत साधनले भ्याएसम्म सहयोग गर्नुपर्दछ ।

४.४ मानवीय सेवा, सहायता तथा यस प्रकारका क्रियाकलापहरुको प्रवर्द्धन र विकासमा सदैव प्रयासरत रहनुपर्दछ ।

## ५. आन्तरिक सुशासन, पारदर्शिता र जवाफदेहिता

५.१ संस्थाहरुले विधिको शासनको सिद्धान्तलाई आत्मसात गरी संस्थाका क्रियाकलापहरु सञ्चालन गर्नुपर्दछ ।

५.२ सरकार, सर्वसाधारण नागरिक, सहयोगी संस्था, साझेदार निकाय, लाभग्राही तथा अन्य सरोकारवाला निकायहरुसँग व्यवहार गर्दा पारदर्शी ढंगले गर्नुपर्दछ ।

५.३ बित्तीय कारोवार, विधि विधान एवं कार्य प्रणाली, कार्यकारी बोर्ड र साझेदारी निकायहरु सम्बन्धी सम्पूर्ण सूचनाहरु सधैं खुल्ला र सर्वसाधारणको पहुँचमा हुनुपर्दछ ।

५.४ आफ्ना कार्यहरु र श्रोत साधनहरुको उपयोगिताबारे सामाजिक परीक्षण तथा सार्वजनिक लेखापरीक्षण लगायतका विधिहरु मार्फत नियमित रुपमा सार्वजनिक जानकारी गराउनुपर्दछ ।

५.५ आफ्ना काम तथा निर्णयहरुको सन्दर्भमा आफ्ना सहयोगी निकाय, सरकार, लाभग्राही समुदाय, साधारण सदस्य तथा साझेदार निकायहरुप्रति पनि उत्तिकै जवाफदेही हुनुपर्दछ ।

५.६ गैससहरुबाट प्रवाह हुने कुनैपनि सूचना सत्य र सही हुनुपर्दछ ।

५.७ आफूहरुमध्ये कर्मचारी, कार्यकारी बोर्ड, स्वयंसेवक, साझेदार वा सेवाप्रदायकबाट भएका कार्य गलत देखिएमा तत्काल सच्याउनु पर्दछ र पुनः गल्ती नगर्ने पाठ सिक्नु पर्दछ ।

५.८ आन्तरिक लोकतन्त्र, खुला सदस्यता र सुशासनको विकास गरी आफ्ना सबै संरचनाहरुमा समानुपातिक र समावेशी प्रतिनिधित्वको सिद्धान्तलाई अंगीकार गर्नुपर्दछ ।

५.९ पछाडि पारिएको वर्ग, क्षेत्र र समुदायको प्रतिनिधित्वलाई सुनिश्चित गर्न गराउन सकारात्मक विभेदको सिद्धान्तलाई अवलम्बन गर्नुपर्दछ ।

## ६. आर्थिक अनुशासन

६.१ कुनै दातृ निकायबाट वित्तीय वा अन्य कुनै प्रकारको सहयोग लिंदा संस्थाका उद्देश्य तथा सिद्धान्तहरुलाई योगदान पुग्नेगरी र राज्यको विद्यमान कानून बमोजिम प्राप्ती गर्नुपर्दछ ।

६.२ प्रत्येक गैससले आफ्नो बजेट नियमित वार्षिक साधारण सभाबाट पारित गराई स्वीकृत बजेट अनुसार मितव्ययी ढंगले संचालित हुनुपर्दछ ।

६.३ संस्थाको कुनैपनि चल अचल सम्पत्ति आफ्नो मनोमानी खर्च गर्ने, व्यक्तिगत प्रयोजनका लागि प्रयोग गर्ने, मास्ने वा हानी नोक्सानी हुने कार्य गर्नुहुँदैन ।

६.४ प्रत्येक गैसस गैर-नाफामूलक संस्थाको रुपमा संचालन हुनुपर्दछ । संस्थाको अतिरिक्त आम्दानी वा बचतलाई नाफाको रुपमा लिई कुनैपनि कार्यकारी, सदस्य वा कर्मचारीलाई लाभांश वितरण गर्नुहुँदैन ।

६.५ संस्थाको नीति नियमले तोकेभन्दा बढी वा नियममा उल्लेख नभएको रकम वा सुविधा आफुखुशी उपयोग गर्नुहुँदैन ।

६.६ प्रत्येक गैससले वित्तीय कारोवारको आन्तरिक नियन्त्रण र परीक्षणका लागि उपयुक्त नियन्त्रण प्रणाली र लेखापरीक्षण गर्ने पद्धति अभ्यासमा ल्याएको हुनुपर्दछ । उपरोक्त पद्धति तथा अभ्यास प्रचलित कानून बमोजिम हुनुपर्दछ ।

६.७ संस्थाको आर्थिक कारोबार प्रचलित नियम, कानून र विधिसम्मत ढङ्गले अधिकारप्राप्त अधिकारीद्वारा प्रमाणित गरी चुस्त दुरुस्त अभिलेख राख्नु पर्दछ ।

## ७. स्वायत्तता तथा आपसी सद्भाव

७.१ कुनैपनि गैसस सरकार, अन्तरसरकारी निकाय वा कुनै अन्तरराष्ट्रिय संघ संस्थाको अंग वा उनीहरुबाट प्रत्यक्ष नियन्त्रित हुनुहुँदैन ।

७.२ संस्थाको मूल उद्देश्यमा आँच नआउने गरी संविधानले दिएको अधिकारको प्रयोग गरी गैससका पदाधिकारी/सदस्यहरुले आफ्नो विचार राख्नु पर्दछ । तर यसरी आफ्नो विचार प्रकट गर्दा अरुलाई व्यक्तिगत रुपमा आक्षेप लगाउने कार्य गर्नुहुँदैन ।

७.३ प्रत्येक गैसस, त्यसका पदाधिकारी, सदस्य, कर्मचारी तथा स्वयंसेवकहरुले गैससहरुको हकहितको संरक्षण, प्रवर्धन र पक्षपोषणको कार्य गर्नुपर्दछ ।

७.४ कुनैपनि निकायबाट बित्तीय तथा अन्य कुनै खालको सहयोग लिंदा संस्थाको उद्देश्य त्था निर्देशक सिद्धान्तहरुलाई योगदान पुग्नेगरी लिनुपर्दछ ।

## ८. आत्मनिर्भरता तथा दिगोपना

८.१ सदस्य संस्थाहरुले सामाजिक/सामुदायिक गतिविधिहरु सञ्चालन गर्दा आत्मनिर्भरता र दिगोपनाका लागि आवश्यकतानुसार अल्पकालीन र दीर्घकालीन कार्यक्रमहरु सञ्चालन गर्नुपर्दछ ।

८.२ संस्थाको संस्थागत विकासतर्फ प्रत्येक सदस्यले रचनात्मक रुपमा निरन्तर लागिरहनु पर्दछ ।

## ९ मानव संसाधन ब्यवस्थापन

९.१ प्रत्येक गैससले कर्मचारी वा स्वयंसेवक छनौट गर्दा संस्थाको उद्देश्यप्रति प्रतिबद्ध हुने सक्षम र जिम्मेवार व्यक्तिहरु छनौट गर्नुपर्दछ ।

९.२ कर्मचारी वा स्वयंसेवक राखी काम गर्ने प्रत्येक गैससले लिखित रुपमा मानव संसाधन नीतिहरु बनाई लागू गर्नुपर्दछ । त्यस्ता नीतिहरुमा कर्मचारीहरुको पारिश्रमिक र अन्य सुविधाका बिषयहरुबारे स्पष्ट व्यवस्था गरिएको हुनुपर्दछ ।

९.३ प्रत्येक गैससले आफ्ना सदस्य तथा कर्मचारीहरुलाई व्यक्तित्व विकास गर्ने अवसर वा वातावरण दिनुपर्दछ ।

९.४ गैससले कार्यकारी समिति, कर्मचारी वा स्वयंसेवक छनौट र परिचालन गर्दा समानुपातिक र समावेशी सिद्धान्तलाई अंगीकार गर्नुपर्दछ ।

## १०. समन्वय र सहकार्य

१०.१ आफ्नो कार्यक्षेत्रभित्र रही राष्ट्रिय र स्थानीयस्तरका विभिन्न सरकारी, गैरसरकारी तथा निजी संघ संस्थाहरु वा लाभग्राही र अन्य सरोकारवालाहरुसँग समन्वय कायम गरी कार्य गर्नुपर्दछ ।

१०.२ समान उद्देश्य तथा कार्यक्रम भएका विभिन्न संघ संस्था एवं सञ्जालहरुसँग समान सम्बन्धको आधारमा सम्पर्क, समन्वय र साझेदारीको विकास गर्नुपर्दछ ।

१०.३ संस्थाका उद्देश्य, लक्षित समुदाय र कार्यक्षेत्र जुध्न गएका कारण हुन सक्ने अस्वस्थ प्रतिस्पर्धा, सेवा तथा कामहरुको दोहोरोपना वा एक अर्काप्रति अवरोध वा निषेध गर्ने जस्ता कार्यहरुबाट गैससहरु पूर्ण रुपमा मुक्त हुनुपर्दछ ।

१०.४ गैसस महासंघ नेपालका केन्द्रीय, क्षेत्रीय तथा जिल्ला शाखाहरुसँग आवश्यक सम्पर्क र समन्वय कायम गरी संस्थाका गतिविधिहरु अगाडि बढाउनु पर्दछ ।